ليبالي

# सही अकीदा सँबन्धित केही महत्वपूर्ण कुराहरू

مسائل مهمة

## في العقيدة الصحيحة




संकलन :

**शैख मुहम्मद जमील जैनू**

إعداد

فضيلة الشيخ : محمد جميل زينو

अनुवाद :

**मुहम्मद सलीम साजिद अल-मदनी**

ترجمة

محمد سليم ساجد المدني



المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بغرب الديرة
Cooperative Office for Call & Guidance to Communities at Western Dirah
هاتف ٤٢٩١٩٤٦ فاكس ٤٢٩١٨٥١ ص.ب ٨٤٤٢٥ الرياض ١١٦
لدعم مطبوعات المكتب - لدى مصرف الراجحي ٤٠٩٣٤٠٠٠١٠٨٠١٠٨٦
WWW.DERADAWA.COM E-MAIL: INFO@DERADAWA.COM

# विषय सूची





बिस्मिल्लाहिर्रहमानिर्रहीम

"मैं शुरू गर्दछु अल्लाहको नामबाट जुन धेरै दयालु र कृपालु हुन् ।

सम्पूर्ण स्तुति र प्रशंसा मात्र अल्लाहका लागि समर्पित छन् । अल्लाहका संदेशवाहक मोहम्मद माथि सर्ब शान्ति होस् ।

यस पुस्तिकामा इस्लामी अक़ीदा (आस्था) को सम्बन्धमा केही महत्वपूर्ण कुराहरूलाई प्रश्न-उत्तरको रूपमा प्रस्तुत गरिएको छ । यी कुराहरू शैख मो॰ जमील जैनू को किताब "अल अक़ीदा अल इस्लामिया मिनल किताबे वल सुन्नह अल सहीहा" बाट सँकलित गरिएका हुन् । यी कुराहरूको जान्कारी केही मुसलमानहरूलाई अवश्य छ, तर मुसलमानहरूको बहुतायत यी कुराहरूसित लगभग अपरिचित र अनभिज्ञ छ ।

अल्लाह तआलासित प्रार्थना छ कि यस पुस्तिकालाई पढ़ने तथा लेखनेहरूका लागि लाभदायक बनाओस् ।

निस्सन्देह अल्लाह महान कृपालु र दयालु हो । उत्साह र साहस प्रदान गर्ने वाला अल्लाह नै हो ।



# हाम्रो सृष्टि को उद्देश्य

**प्र-१:** अल्लाह तआलाले हामीहरूलाई किन जन्म दिएको छ?

**उ-१:** अल्लाह तआलाले हामीहरूलाई यस उद्देश्यले जन्म दिएको छ कि हामी मात्र अल्लाहकै उपासना, पूजा र भक्ति गरौं तथा कसैलाई अल्लाहको सहभागी न बनाऔं। अल्लाह को प्रवचन छ :

﴿وَمَا خَلَقْتُ الْجِنَّ وَالإِنسَ إِلاَّ لِيَعْبُدُونِ﴾ (الذاريات:٥٦)

"मैले जिन्न (देवदूत) र मानिसहरूलाई मात्र आफ्नो आराधना र भक्तिका लागि जन्म दिएको छु।" (अलज्जारियात:५६)

नबी मोहम्मद ﷺ ले भन्नु भयो :

«حق الله على العباد أن يعبدوه ولا يشركوا به شيئا»

(متفق عليه)

"अल्लाहको अधिकार उपासकहरूमाथि यो हो कि तिनीहरू अल्लाहकै भक्ति गरून् र कसैलाई अल्लाहको साझी न बनाउन् |" (बोखारी, मुस्लिम)

**प्र-२:** इबादत (उपासना) को अर्थ के हो ?

**उ-२:** इबादत प्रत्येक प्रत्यक्ष, अंतरात्मक बचन र कर्म लाई भनिन्छ जुन अल्लाहको नजिक मनोनीत होस| जसलाई अल्लाहले मन पराउँछ र उसित प्रसन्न हुन्छ | जस्तै : दुआ, पुकार, नमाज़, आराधना, प्रार्थना, आशा, डर, बलि, विनय आदि | अल्लाहको महावाणी छ :

﴿قُلْ إِنَّ صَلاَتِي وَنُسُكِي وَمَحْيَايَ وَمَمَاتِي لِلَّهِ رَبِّ الْعَالَمِينَ﴾ (الأنعام:١٦٢)

"भनि देऊ: मेरा नमाज (अराधना) बलिदान, जीवन र निधन मात्र अल्लाहकै लागि हुन्, जुन सम्पूर्ण संसारको परमात्मा हो |" (अलअन्आम:१६२)

एउटा हदीसे क़ुदसीमा अल्लाह को कथन छ :

«قال تعالى .... وما تقرب إلي عبدي بشيء أحب إلي مما افترضت عليه» (حديث قدسي رواه البخاري)

"मेरो नजिक सब भन्दा रूचिकर वस्तु जस द्वारा मेरो उपासक मेरा समीपता प्राप्त गर्दछ, त्यो कार्य हो जसलाई मैले उमाथि अनिवार्य घोषीत गरेको छु।" (बोख़ारी)

**प्र–३:** इबादत वा उपासनाका कति प्रकारहरू छन् ?

**उ–३:** इबादत वा उपासनाका विभिन्न प्रकारहरू छन् । जस्तै: दुआ गर्नु, प्रार्थना गर्नु, पुकारनु, भयभीत हुनु, आशा गर्नु, भरोसा गर्नु, बलिदान गर्नु, मन्नतमान्नु, भेंट, चढ़ावा चढ़ाउनु, रुकूअ गर्नु, सज्दा गर्नु, (माथा टेक्नु) तवाफ़ (परिक्रमा) गर्नु, शपथ खानु, मध्यस्त बनाउनु इत्यादि । यी बाहेक अरू पनि इबादतका धेरै जसो प्रकारहरू हुन् ।

**प्र–४:** अल्लाहले नबी र रसूल (संदेशवाहक दूत) हरूलाई किन अवतरित गर्यो ?

**उ–४:** अल्लाहले उहाँहरूलाई यो उद्देश्यले अवतरित गर्यो कि उनीहरू मानवलाई अल्लाहको इबादत र आराधना तिर बोलाउन् र अनेकेश्वरवादलाई अन्त पारून् । अल्लाहको बचन छ :

﴿وَلَقَدْ بَعَثْنَا فِي كُلِّ أُمَّةٍ رَسُولاً أَنْ اُعْبُدُوا اللَّهَ وَاجْتَنِبُوا الطَّاغُوتَ﴾ (النحل:٣٦)

"र निस्सन्देह हामीले सबै सम्प्रदायमा एउटा संदेशवाहक दूत लाई पठायौं ताकि तिनीहरू अल्लाहको उपासना गरून् अनि झूठा भगवानहरु-देखि छुट्टै रहुन् ।" (अलनहल: ३६)

नबी ﷺ ले भन्नु भएको छ :

«الأنبياء إخوة... ودينهم واحد» (متفق عليه)

"सबै संदेशवाहकदूतहरू भाई-भाई हुन् र वहाँ हरूको धर्म एउटै नै हो ।" (बोखारी, मुस्लिम)

अर्थात: सबैले मानवलाई अद्वैतवादतिर नै बोलाए ।



# तौहीद (अद्वैतवाद) का प्रकारहरू

**प्र-५:** तौहीदे रुबूबियत केलाई भनिन्छ ?

**उ-५:** अल्लाहलाई उसको कार्यमा एक्लै मान्नु र यो स्वीकार गर्नु कि सृष्टिकर्ता, अन्नदाता, सुखदाता, प्राणदाता, मृत्यु दाता, पालनकर्ता, संहारकर्ता एक्लै अल्लाह नै हो । लाभ, र हानि इत्यादि उसकै अधिकारमा छ कोही उसको साझेदार छैन । अल्लाह को महावाणी छ :

﴿الْحَمْدُ لِلَّهِ رَبِّ الْعَالَمِينَ﴾ (الفاتحة:٢)

"सम्पूर्ण स्तुति र प्रशंसा अल्लाह कै लागि समर्पित छन्, जो सम्पूर्ण संसारको परमात्मा हो ।" (अल-फातेहा:२)

नबी ﷺ ले भन्नु भयो :

«أنت رب السموات والأرض» (متفق عليه)

"तिमी नै आकाश र धरतीका ईश्वर छौ ।" (सही बुखारी, मुस्लिम)

**प्र–६:** तौहीद उलूहियतको अर्थ के हो?

**उ–६:** इबादत, भक्ति, पूजा र उपासनामा अल्लाहलाई एक्लै मान्नु । अर्थात: यो स्वीकार गर्नु कि अल्लाह नै एक्लै पूजनीय हो । अल्लाह बाहेक कोही पूज्य छैन । अत: अल्लाहलाई नै पुकार्नु, उसैको लागि बलिदान गर्नु, उसैको लागि चढ़ावा चढ़ाउनु, उसैको लागि नमाज पढ़नु, उसैसित आशा राख्नु, उसैबाट भयभित हुनु, उसैलाई मध्यस्त बनाउनु, उसैसित सहायता मांगनु, उसैमाथि भरोसा राख्नु, आदिलाई "तौहीदे उलूहियत" भनिन्छ । अल्लाहको बचन छ :

﴿وَإِلَـٰهُكُمْ إِلَـٰهٌ وَاحِدٌ لَا إِلَـٰهَ إِلَّا هُوَ الرَّحْمَـٰنُ الرَّحِيمُ﴾
(البقرة:١٦٣)

"तिम्रो पूजनीय ईश्वर मात्र एउटै छ, उस बाहेक कोही अन्य पूज्य छैन एवम उ धेरे कृपालु र दयालु छ "। (अलबक्रह:१६३)

नबी ﷺ को कथन छ :

«فليكـن أول مـا تدعوهـم إليـه شـهادة أن لا إلـه إلا الله»

(متفق عليه) وفي رواية للبخاري "إلى أن يوحدوا الله"

"सब भन्दा पहिला मानवलाई यस गवाही (साक्ष्य) तिर बोलाउ कि अल्लाह बाहेक कोही पूजनीय छैन।" (बोखारी, मुस्लिम)

सही बोखारी को एक अनुकरण मा छ:

"मानवलाई यो स्वीकार गराउ कि तिनी मात्र अल्लाहकै उपासना गर्नेछन्, अरुलाई सामेल गर्दैनन् ।"

**प्र–७:** तौहीद रुबूबियत र तौहीद उलूहियतको मक्सद (अभिप्राय) के हो ?

**उ–७:** यी दुईटैको मक्सद यो छ कि हामीले आफ्नो सृष्टिकर्ता, पालनकर्ता पूजनीय अल्लाहका श्रेष्ठता र महानतालाई जान्नु पर्छ र मात्र उलाई नै पूज्नु पर्छ । आफ्नो जीवन अल्लाहकै आदेशानुसार निर्वाह गर्नु पर्छ। आफ्नो हृदयमा ईमान र आस्था लाई बलियो र दृढ पार्नु पर्छ एवम् यस भूमिमाथि अल्लाहकै नियम लागू गर्नु पर्छ ।

**प्र–८:** तौहीदे अस्मा व सिफ़ातको आशय के हो ?

**उ–८:** तौहीद अस्मा व सिफ़ातको आशय यो हो कि अल्लाहले आफ्नो किताब "कुर्आन" मा वर्णन गरे बमोजिम वा उसका सन्देशवाहक मुहम्मद ﷺ ले उसका जुन नाम र विशेषताहरू बताउनु भएको छ, तिनलाई यस प्रकार अल्लाहको लागि साबित मानिनु पर्दछ। जस्तो उसको महानता र दबदबाको लायक छ। बिना तावील, तम्सील, तातील तथा तक्यीफका तिनलाई सिद्ध पार्नु पर्दछ।

**तावील:**

अल्लाहका नाम तथा विशेषताहरूको उल्टा व्याख्या गर्नु।

**तम्सील:**

अल्लाहका नाम तथा विशेषताहरूको कुनै वस्तुको रूपमा उदाहरण दिनु।

**तातील:**

अल्लाहका नाम तथा विशेषताहरूलाई बेमाना र निरर्थक समझनु।

**तकयीफ़:**

अल्लाहका नाम तथा विशेषताहरूलाई कुनै आकारको रूपमा वर्णन गर्नु ।

अल्लाहको महावाणी छ :

﴿لَيْسَ كَمِثْلِهِ شَيْءٌ وَهُوَ السَّمِيعُ الْبَصِيرُ﴾ (الشورى:١١)

"उ जस्तो कुनै चीज छैन, र उ सुन्ने र देख्ने वाला हो।" (अलशोरा:११)

नबी ﷺ ले भन्नु भएको छ :

«ينزل ربنا في كل ليلة إلى السماء الدنيا» (متفق عليه)

"हाम्रो परमात्मा प्रत्येक राति संसारीय आकाश-माथि नोजूल (अनुलोम) गर्नु हुन्छ ।" (बोखारी, मुस्लिम)

संसारीय आकाशमाथि अल्लाहको अनुलोम गर्ने कर्म उसको महानताको लायक र अनुकूल हो । प्राणि वर्ग मा कसैको साथ उसको समाकार छैन ।



## महापाप

**प्र-९:** अल्लाहको समक्ष सबभन्दा ठूलो पाप के हो?

**उ-९:** अल्लाहको नजिक सबभन्दा ठूलो पाप शिर्क अकबर (महा अनेकेश्वरवाद) हो । अल्लाहले आफ्ना सदाचारी उपासक हज़रत लुक़मान अलैहिस्सलामको सम्बन्धमा ब्यान गरेको छ कि वहाँले आफ्नो छोरालाई शिक्षा दिंदै भन्नु भयो :

﴿يَابُنَيَّ لاَ تُشْرِكْ بِاللهِ إِنَّ الشِّرْكَ لَظُلْمٌ عَظِيمٌ﴾ (لقمان:١٣)

"हे मेरो प्रिय छोरो ! अल्लाहको साथ कसैलाई सामेल नगर, निस्सन्देह शिर्क (अनेकेश्वरवाद) ठूलो अत्याचार हो ।" (लुकमान:१३)

नबी ﷺ लाई एक जनाले सोध्यो: कि सबभन्दा ठूलो पाप के हो? वहाँले उत्तरमा भन्नु भयो :

«أن تجعل لله ندا وهو خلقك» (متفق عليه)

"सबभन्दा ठूलो पाप यो हो कि तिमी अल्लाहको

साथमा कसैलाई साझेदार बनाऔ, जबकि अल्लाह ले नै तिमीलाई जन्म दिएको छ।" (बोख़ारी, मुस्लिम)

**प्र-१०:** ठूलो शिर्कको मतलब के हो ?

**उ-१०:** ठूलो शिर्कको मतलब यो हो कि इबादत, उपासना र भक्तिका जति पनि प्रकारहरू छन्, ती मध्ये कुनै प्रकारलाई अल्लाह बाहेक अरूको लागि गर्नु। जस्तै : दुआ, पुकार, प्रार्थना, बलिदान आदि।

अल्लाहको महावाणी छ :

﴿وَلاَ تَدْعُ مِنْ دُونِ اللّهِ مَا لاَ يَنْفَعُكَ وَلاَ يَضُرُّكَ فَإِنْ فَعَلْتَ فَإِنَّكَ إِذًا مِنَ الظَّالِمِينَ﴾ (يونس:١٠٦)

"अल्लाह बाहेक कसैलाई न पुकार, जुन तिमीलाई नत्र लाभ पु-याउन सक्छ न हानि, यदि तिमीले अरूलाई पुकार्यौ भने तिमी अत्याचारीहरू मध्ये भै थाल्छौ।" (यूनुस:१०६)

नबी ﷺ को भनाई छ :

«أكبر الكبائر الإشراك بالله، وعقوق الوالدين وشهادة الزور» (البخاري)

"सब भन्दा ठूलो अपराध (पाप) अल्लाहको लागि साझेदार बनाउनु, बुवा र आमाको अवज्ञा गर्नु, तथा झूटो गवाही दिनु हो।" (बोखारी)

**प्र-११:** ठूलो शिर्क को नोक्सान के हो ?

**उ-११:** ठूलो शिर्क गर्दा खेरी मानिस निरँतरतापूर्वक नरक वासी हुन जान्छ। अल्लाहको बचन छ :

﴿إِنَّهُ مَنْ يُشْرِكْ بِاللَّهِ فَقَدْ حَرَّمَ اللَّهُ عَلَيْهِ الْجَنَّةَ وَمَأْوَاهُ النَّارُ وَمَا لِلظَّالِمِينَ مِنْ أَنصَارٍ﴾ (المائدة:٧٢)

"जो कोही अल्लाहको साझी ठहराउँछ, निश्चय नै अल्लाहले उसको लागि जन्नत (बैकुन्ठ) हराम गरि दिएकोछ र उसको ठेगाना नरकमा हुन्छ, अत्याचारी (अनेकेश्वरवादी) लाई कोही पनि सहायता गर्ने छैन।" (अलमाईदा:७२)

नबी ﷺ ले भन्नु भयो :

«ومن لقي الله يشرك به شيئا دخل النار» (رواه مسلم)

"जसले अल्लाह संग अरूलाई साझी गर्दैमर्छ, उ मरे पछि नरकमा जाने छ।" (मुस्लिम)

**प्र-१२:** मुश्रिक (अनेकेश्वरवादी) कुनै शुभ कार्य गर्छ भने उलाई पुण्य प्राप्त हुने छ वा छैन ?

**उ-१२:** अनेकेश्वरवादीको नत कुनै उपासना स्वीकार योग्य मानिने छ न उसको कुनै शुभ कर्मलाई सही मानिनेछ। अल्लाहको महावाणी छ :

﴿وَلَوْ أَشْرَكُوا لَحَبِطَ عَنْهُمْ مَا كَانُوا يَعْمَلُونَ﴾ (الأنعام:٨٨)

"यदि तिनी (संदेशवाहकदूत) हरूले पनि शिर्क गर्थे भने तिनका सबै शुभ कार्यहरू नष्ट हुन जान्थे।" (अलअन्आम:८८)

हदीसे क़ुदसीमा अल्लाहको बचन छ :

«أنا أغنى الشركاء عن الشرك، من عمل عملا أشرك معي فيه غيري تركته وشركه» (حديث قدسي)

"मँ साझेदारहरू बाट बेनेयाज (नि:स्पृह) छु, जसले कुनै कार्यमा कसैलाई मेरो सहभागी बनायो, उ सँग मँलाई कुनै मतलब छैन, मँ उसको यो कर्म लाई नष्ट पारी दिन्छु।"



## ठूलो शिर्कका केही प्रकारहरू

**प्र-१३:** मृतक र अनुपस्थित व्यक्तियहरूसित सहायताको लागि प्रार्थना गर्नु कस्तोहो ?

**उ-१३:** सहायताको लागि उपर्युक्त व्यक्तिहरूसित प्रार्थना गर्नु अवैधानिक हो । हामीले मात्र अल्लाह सित प्रार्थना गर्नु पर्दछ। किनकि अल्लाहको महावाणी छ:

﴿وَالَّذِينَ يَدْعُونَ مِنْ دُونِ اللَّهِ لاَ يَخْلُقُونَ شَيْئًا وَهُمْ يُخْلَقُونَ ○ أَمْوَاتٌ غَيْرُ أَحْيَاءٍ وَمَا يَشْعُرُونَ أَيَّانَ يُبْعَثُونَ﴾

(النحل: ٢٠، ٢١)

"अल्लाह बाहेक जसलाई यिनीहरू गुहार्ने गर्दछन् तिनी कुनै बस्तुलाई जन्म दिन सक्दैनन्, बरू तिनी-हरूलाई पनि अल्लाहले नै जन्म दिएको छ । तिनी-हरू मृतक हुन्, जीवित होईनन्, तिनीलाई यो पनि थाहा छैन कि तिनीहरू कहिले आफना चिहान बाट पुन: जीवित पारी उठाईनेछन्।" (अलनहल: २०,२१)

नबी ﷺ अल्लाहसित बिन्ती गर्नु हुन्थ्यो :

«يا حي يا قيوم، برحمتك أستغيث» (حديث حسن، رواه الترمذي)

हे सदैव जीवित र कायम रहने वाला परमात्मा! मँ तिम्रै कृपा र दयाका लागि याचना गर्द छु।" (तिर्मिज़ी)

**प्र-१४:** के जीवितहरूसित सहायताको लागि फिराद गर्नु उचित छ ?

**उ-१४:** जीवितहरूसित तिनका क्षम्ता बमोजिम सहायता-को लागि फिराद गर्नु उचित छ। अल्लाहले हज़रत मूसा अलैहिस्सलामको बारेमा ब्यान गरेको छ :

﴿فَاسْتَغَاثَهُ الَّذِي مِنْ شِيعَتِهِ عَلَى الَّذِي مِنْ عَدُوِّهِ فَوَكَزَهُ مُوسَى فَقَضَى عَلَيْهِ﴾ (القصص:١٥)

"मूसाका समुदायको एक व्यक्तिले आफ्नो शत्रु बाट सुरक्षाको लागि मूसालाई गुहार्यो, मूसाले शत्रु लाई एक मुक्का हान्यो र उसलाई अन्त पारीदियो।" (अलकसस:१५)

**प्र-१५:** के अल्लाह बाहेक अरूसित सहायता माँगनु उचित छ?

**उ-१५:** यस्तो कार्यमा अरूसित सहायता माँगनु उचित

छैन जसको क्षम्ता अल्लाह बाहेक कोहीलाई छैन।
अल्लाहको महावाणी छ :

﴿إِيَّاكَ نَعْبُدُ وَإِيَّاكَ نَسْتَعِينُ﴾ (الفاتحة:٥)

"हे परमात्मा! हामी तिम्रै पूजा गर्दछौं र तिम्रै सित सहायताको लागि बिन्ती गर्दछौं ।" (अलफातेहा:५)

नबी ﷺ को भनाई छ :

«إذا سألت فاسأل الله، وإذا استعنت فاستعن بالله» (رواه الترمذي وقال: حديث حسن صحيح)

"केही मांगन चाहोस भने मात्र अल्लाहसित माँग्, मद्दतको खाँचो आई परोस भने मात्र अल्लाहसित याचना गर् ।" (तिर्मिज़ी)

**प्र–१६:** के हामी जीवित व्यक्तिहरूसित मद्दत माँगन सक्छौं?

**उ–१६:** होर ! यदि तिनीहरू मद्दत गर्नु क्षम्ता राख्छन् भने केही अनिष्ट छैन । जस्तै : ऋृण मांगनु, कुनै कार्यमा सहयोग चाहनु । अल्लाहको बचन छ :

﴿وَتَعَاوَنُوا عَلَى الْبِرِّ وَالتَّقْوَى﴾ (المائدة:٢)

"तिमीहरू शुभ कार्यमा एक अर्कालाई सहयोग गर्। " (अलमाईदा:२)

नबी ﷺ ले भन्नु भएकोछ :

«والله في عـون العبـد ما كـان العبـد في عـون أخيـه»

(رواه مسلم)

"अल्लाह तआला उस मानिस को मद्दत मा त्यस बेला सम्म हुन्छ जब सम्म उ आपनो भाईको मद्दतमा हुनेछ ।" (मुस्लिम)

तर स्वास्थ्य, जीविका, साहस इत्यादि केवल अल्लाहसित माँगनु जरूरी छ, किनकि यी कार्यहरूको क्षम्ता जीवित मानिसहरूको वशमा पनि छैन भने मृतकहरूको कुनै कुरै छैन ।

अल्लाहको महावाणी छ :

﴿الَّذِي خَلَقَنِي فَهُوَ يَهْدِينِ ○ وَالَّذِي هُوَ يُطْعِمُنِي وَيَسْقِينِ ○ وَإِذَا مَرِضْتُ فَهُوَ يَشْفِينِ﴾ (الشعراء:٧٨-٨٠)

"जसले मलाई जन्म दिएको छ, उनै मँलाई सत्यमार्ग दिखाँउछ, उनै मँलाई खाना-पानी दिराखेछ र जब मँलाई रोग लाग्छ भने उनै स्वास्थ्य प्रदान गर्छ ।" (अलशोरा:७८-८०)

**प्र-१७:** के अल्लाह बाहेक अरूको नाममा मन्नत, नियाज र भेटी चढ़ाउन पाईन्छ ?

**उ-१७:** अल्लाहको सिवाय अरूको नाममा मन्नत, नियाज र भेटी चढ़ाउनु हराम (वर्जित) छ। अल्लाहले हज़रत इमरानकी पत्नीको बृतान्त ब्यान गर्दै भनेको छ :

﴿رَبِّ إِنِّي نَذَرْتُ لَكَ مَا فِي بَطْنِي مُحَرَّرًا﴾

(آل عمران:٣٥)

"हे मेरो परमात्मा! मैले तिम्रो लागि प्रतिज्ञा (भाकल) गरेकीछु कि मेरो उदरमा जुन सन्तान छ उलाई मँ तिम्रोलागि स्वतँत्र (स्वाधीन) गरि दिन्छु।" (आले इमरान:३५)

नबी ﷺ ले भन्नु भयो :

«من نذر أن يطيع الله فليطعه، ومن نذر أن يعصيه فلا يعصه» (رواه البخاري)

"जसले अल्लाहको आज्ञापालनगर्नका लागि प्रतिज्ञा गर्यो, उलाई चाहिन्छ कि आफ्नो प्रतिज्ञा पुरा गरोस्, र जसले अल्लाहको अवज्ञाका लागि प्रतिज्ञा गर्यो, उलाई चाहिन्छ कि आफ्नो प्रतिज्ञा पुरा नगरोस्। अर्थात: अल्लाहका अवज्ञा नगरोस्।" (बोख़ारी)



# जादु (इन्द्रजाल) को हुकुम

**प्र-१८:** जादु सम्बन्धी इस्लामको हुकुम के हो ?

**उ-१८:** जादु महा अप्राधहरू मध्ये एक ठूलो अप्राध हो, जुन कहिले काहीं नास्तिकताको सीमा सम्म पुग्न थाल्छ। अल्लाह तआलाको महावाणी छ :

﴿وَلَكِنَّ الشَّيَاطِينَ كَفَرُوا يُعَلِّمُونَ النَّاسَ السِّحْرَ﴾ (البقرة:١٠٢)

"तर शैतान (दुष्टात्मक) हरूले नै नास्तिकता र अधर्म कार्य गरे, तिनी मानवहरूलाई जादु को शिक्षा दिन थाले।" (अलबक्रह :१०२)

नबी ﷺ ले भन्नु भयो :

«اجتنبوا السبع الموبقات: الشرك بالله والسحر...» الحديث (رواه مسلم).

"सात प्रकारका घातक कुकर्महरू बाट सावधान

रह् : अल्लाहको लागि सहभागी बनाउनु बाट र जादु बाट ... ।" (मुस्लिम)

प्रायः जादुगर अनेकेश्वरवादी, नास्तिक र दोषोत्पादक हुन्छ । प्रतिहिंसा अथवा दण्डको स्वरूप उसलाई बध गर्नु र मृत्यु दण्ड दिनु जरूरी छ ।

उपर्युक्त दण्ड उसको मिथ्यावादको अनुसार नै हो, किनकि उसका कुकर्महरू मध्ये यी कार्यहरू हुन् :

दृष्टिबंध, धार्मिक षडयंत्र, अशान्ति, अप्राध दोषाच्छादन, पति-पत्नीको बीच भेद र पृथकता पार्नु, जीवन समाप्त गर्नु आदि ।

**प्र-१९:** के हामी प्रोक्षविज्ञान (ईल्मे गैब) को प्रति दैवज्ञ, ज्योतिषी, र दीढ बन्ध गर्नेहरूलाई पुष्टि गर्न र सत्य मान्न सक्छौं ?

**उ-१९:** तिनीहरूलाई सत्य मान्नु र तिनको पुष्टि गर्नु अनुचित र अवैधानिक हो । अल्लाहको महावाणी छ :

﴿قُلْ لاَ يَعْلَمُ مَنْ فِي السَّمَاوَاتِ وَالأَرْضِ الْغَيْبَ إِلاَّ اللَّهُ﴾

(النمل:٦٥)

"भनिदेउ ! कि आकाश र पृथ्वीमा अल्लाह बाहेक कोहीलाई परोक्षविज्ञान छैन ।" (अलनमल:६५)

नबी ﷺ को बचन छ :

«من أتى عرافا أو كاهنا فصدقه بما يقول، فقد كفر بما أنزل على محمد» (صحيح رواه أحمد)

"जुन व्यक्ति कुनै देवज्ञ वा ज्योतिषी तिर लाग्यो र उसको बचनलाई सत्य मान्यो एवम उसको पुष्टि गर्यो भने उसले मोहम्मद माथि अवतरित गरिएको धर्मलाई अस्वीकार गरिदियो ।" (अहमद)



# सानो शिर्क

**प्र-२०:** सानो शिर्कको अभिप्राय के हो ?

**उ-२०:** सानो शिर्क ठूला अप्राधहरू मध्ये नै हो तर सानो शिर्क गर्ने वाला निरंतरतापूर्वक नरकमा बस्दैन : सजाय पछि उ नरकबाट बाहिर निकालिईनेछ ।

सानो शिर्कका विभिन्न प्रकारहरू छन् । ती मध्ये नै रेयाकारी (देखौवा) हो ।

अल्लाहको बचन छ :

﴿فَمَنْ كَانَ يَرْجُوا لِقَاءَ رَبِّهِ فَلْيَعْمَلْ عَمَلاً صَالِحًا وَلاَ يُشْرِكْ بِعِبَادَةِ رَبِّهِ أَحَدًا﴾ (الكهف:١١٠)

"अत: जसलाई पनि आफ्नो सृष्टिकर्ता सँग भेटने ईच्छा छ उसले सत्यकर्म गर्नु पर्दछ र आफ्नो पालनकर्ताको उपासनामा कसैलाई सहभागी न बनाउने गर्नु पर्दछ ।" (अलकहफ:११०)

नबी ﷺ ले भन्नु भयो :

«إن أخـوف مـا أخـاف عليكـم الشـرك الأصغـر: الريـا»
(صحيح، رواه أحمد)

"मँलाई तिमीहरू प्रति सब भन्दा बढ़ि सानो शिर्क को भय लाग्दछ, र त्यो देखौवाको लागि कुनै कार्य गर्नु हो ।" (अहमद)

**प्र-२१:** के अल्लाह बाहेक कसैको नाम शपथ खानु उचित छ ?

**उ-२१:** अल्लाह बाहेक कसैको नाम शपथ खानु हराम (वर्जित) छ ।

अल्लाहको महावाणी छ :

﴿قُلْ بَلَى وَرَبِّي لَتُبْعَثُنَّ﴾ (التغابن:٧)

"भनिदेउ! मँलाई आफ्नो पालनकर्ताको सौगंध छ कि तिमी पुन: अवश्य नै महाप्रलयको दिन जीवित पारी उठाईने छौ ।" (अलतग़ाबुन:७)

नबी ﷺ को बचन छ :

«من حلف بغير الله فقد أشرك» (صحيح رواه أحمد)

"जसले अल्लाह बाहेक कसैको शपथ खायो उसले शिर्क गर्यो।" (अहमद)

उहाँले यो पनि भन्नु भयो :

«من كان حالفا فليحلف بالله أو ليصمت»

"जो कसम खान चाहन्छ, उसको लागि जरूरी छ कि मात्र अल्लाहको कसम खाओस् वा चुप रहोस्।"

संदेशवाहकदूत र ॠषि मुनि हरूको शपथ खानु ठूलो शिर्क हुन सक्छ यदि शपथ खाने मानिसले यो भावना राख्यो कि उपर्युक्त व्यक्तिहरुलाई यस संसारमा केही अधिकार प्राप्त छ र तिनीहरू हानि पु–याउन सक्दछन्, तसर्थ त्यो मानिस तिनीहरूको नाम असत्य शपथ खांदा भयभीत देखा पर्दछ।

**प्र–२२:** के हामी स्वास्थ्यको उद्देश्यले धागो वा बाला आदि लाउन सक्छौं ?

**उ–२२:** यी वस्तुहरु लाउनु हराम छ। अल्लाहको प्रवचन छ :

﴿وَإِنْ يَمْسَسْكَ اللَّهُ بِضُرٍّ فَلاَ كَاشِفَ لَهُ إِلاَّ هُوَ﴾

(الأنعام:١٧)

"यदि अल्लाहले तिमीलाई कुनै हानि पु-याउन चाहोस् भने उ बाहेक कोही पनि हानिलाई दूर गर्न सक्दैन ।" (अलअन्आम:१७)

हज़रत होजैफा रजि अल्लाहु अन्हु बाट वर्णन भएको छ कि वहाँले एक जनाको हाथमा जरो बाट बाँच्नको लक्ष्यले धागो टन्काईएको हेर्नु भयो, वहाँले धागोलाई टुक्राँउदै क़ुर्आनको यो श्लोक पढ्नु भयो :

﴿وَمَا يُؤْمِنُ أَكْثَرُهُمْ بِاللَّهِ إِلاَّ وَهُمْ مُشْرِكُونَ﴾

(يوسف:١٠٦)

"कतिपय मानिसहरू अल्लाह माथि ईमान (आस्था) राख्दा पनि मुश्रिक (अनेकेश्वरवादी) हुन् ।" (यूसुफ:१०६)

**प्र-२३:** के दृष्टिबन्ध वा जादु बाट सुरक्षाको लागि ताबीज, जन्तर आदि लटकाउनु उचित छ ?

**उ-२३:** यी वस्तुहरूलाई लटकाउनु उचित छैन, किनकि अल्लाहको महावाणी छ :

﴿وَإِنْ يَمْسَسْكَ اللَّهُ بِضُرٍّ فَلاَ كَاشِفَ لَهُ إِلاَّ هُوَ﴾

(الإنعام:١٧)

"यदि अल्लाहले तिमीलाई कुनै हानि पु-याउन चाहोस् भने उ बाहेक कोही पनि हानिलाई दूर गर्न सक्दैन ।" (अलअन्आम:१७)

नबी ﷺ को बचन छ :

«من تعلق تميمة فقد أشرك» (صحيح، رواه أحمد)

"जसले तावीज़, जन्तर लटकायो, उसले शिर्क गर्यो।" (अहमद)



# वसीला (माध्यम) र उसका प्रकारहरू

**प्र-२४:** अल्लाहको निकटता प्राप्त गर्नका लागि हामीले कुन वसीला प्रयोग गर्नु पर्दछ ?

**उ-२४:** वसीला दुई प्रकारका हुन् : उचित र अनुचित ।

**(क) उचित वसीला :**

अल्लाहका पवित्र नामहरू, विशेषताहरू, शुभकार्य र जीवित सदाचारीहरूको दुआका वसीला ।

अल्लाहको महावाणी छ :

﴿وَلِلَّهِ الأَسْمَاءُ الْحُسْنَى فَادْعُوهُ بِهَا﴾ (الأعراف:١٨٠)

"र राम्रा राम्रा नाम अल्लाहकै लागि हुन् सो ती नामहरूले नै अल्लाहलाई पुकार् ।" (अलआराफ़ : १८०)

अल्लाहको अर्को वाणी छ :

﴿يَاأَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَابْتَغُوا إِلَيْهِ الْوَسِيلَةَ﴾ (المائدة:٣٥)

"हे अल्लाहमाथि आस्था राख्नेहरू हो ! अल्लाह सित डर् र उसको निकटताका लागि वसीला (माध्यम) खोज गर् ।" (अलमाईदा: ३५)

अर्थात: अल्लाहका आज्ञापालन र अल्लाहको प्रति राम्रा राम्रा कार्यहरूको माध्यमले अल्लाहको निकटता प्राप्त गर् ।

नबी ﷺ ले भन्नु भएकोछ :

«أسألك بكل اسم هولك سميت به نفسك» (صحيح رواه أحمد)

"हे मेरो पालनकर्ता ! मँ तिम्रो प्रत्येक नामले तिमी सित माँग्दछु । जुन तिमीले आफ्नोलागि मनोनित गर्नु भएको छ ।" (अहमद)

**(ख) अनुचित वसीला :**

मृतकहरूलाई पुकार्नु, वहाँहरूसित आफ्नो सहायताका लागि प्रार्थना गर्नु । जस्तो कि वर्तमान कालमा धेरै जसो

मुसलमानहरूको अवस्था छ, निस्सन्देह यो ठूलो शिर्क हो। अल्लाहको महावाणी छ :

﴿وَلاَ تَدْعُ مِنْ دُونِ اللَّهِ مَا لاَ يَنْفَعُكَ وَلاَ يَضُرُّكَ فَإِنْ فَعَلْتَ فَإِنَّكَ إِذًا مِنَ الظَّالِمِينَ﴾ (يونس:١٠٦)

"अल्लाह बाहेक कसैलाई न पुकार्, जुन तिमीलाई नत्र लाभ पु-याउन सक्छ न हानि। यदि तिमीले कसैलाई पुकार्यौ भने निश्चय नै तिमी अत्याचारी (अनेकेश्वरवादी) हरू मध्ये हुन जान्छौ।" (यूनुस : १०६)

**(ग) नबी ﷺ का मर्यादा र सम्मानलाई वसीला बनाउनु र यो भन्नु :**

हे मेरा परमात्मा ! मोहम्मदका सम्मान र मर्यादाको प्रतिफल मँलाई स्वास्थ्य प्रदान गरून्।

यो वसीला पनि उचित छैन किनकि नबीका सर्वश्रेष्ठ साथीहरूको जीवनकालमा यस प्रकारका वसीलाहरुको कुनै प्रमाण मिल्दैन। बरू नबीको मृत्युपछि हज़रत उमरले नबीका जीवित काका हज़रत अब्बास सँग दुआ को लागि निवेदन गर्नु भयो, नबी सँग निवेदन गर्नु भएन।

यस प्रकारका वसीलाले मानिस शिर्क गर्न थाल्छ, यदि उसले यो भावना राख्यो कि अल्लाहलाई मनुष्यहरूका वसीलाको आवश्यकता छ जस्तो कि राष्ट्रपति र प्रधानमन्त्री आदिको प्रति माध्यम प्रयोग गरिन्छ । अतः यस प्रकारको भावना राख्ने मानिसले आफ्नो सृष्टिकर्ता र पालनकर्ता परमात्मालाई मानव जातिसँग तुलना गर्यो, जुनकि महापाप हो ।

इमाम अबू हनिफाले भन्नु भयो :

"'म यो कुरालाई हराम मान्दछु कि हामी अल्लाह बाहेक अरू सित मागौं ।" (अलदुर्रूल मुख़्तार)



## दुआ र पुकारको हुकुम

**प्र–२५:** के दुआको स्वीकृतिका लागि कुनै मानवको वसीला लिनु जरूरी छ ?

**उ–२५:** दुआको स्वीकृतिका लागि कुनै मानवको वसीला लिनु जरूरी छैन ।

अल्लाहको महावाणी छ :

﴿وَإِذَا سَأَلَكَ عِبَادِي عَنِّي فَإِنِّي قَرِيبٌ﴾ (البقرة:١٨٦)

"हे नबी ! जब मेरा उपासकहरू मेरो बारेमा सोधछन भने त भनिदेउ कि मँ तिनीहरूसित धेरै नजिक छु र मँ पुकारने वालाको पुकारलाई स्वीकार गर्दछु ।" (अलबक्रह :१८६)

नबी ﷺ ले भन्नु भयो :

«إنكم تدعون سميعا قريبا وهو معكم» (رواه مسلم)

"निस्संदेह तिमीहरू उस अल्लाहलाई गुहार्दछौ जुन तिम्रो दुआलाई सुन्दछ र तिम्रो साथ छ ।" (मुस्लिम)

अर्थात: अल्लाह आफ्नो अनुपम ज्ञानले तिम्रो साथ छ, तिम्रो पुकार सुन्दछ र तिमीलाई देख्दछ ।

**प्र–२६:** के जीवितहरूसित दुआ गरिदिनको लागि निवेदन गर्नु उचित छ ?

**उ–२६:** जीवितहरूसित दुआ गरिदिनको लागि निवेदन गर्नु उचित छ, तर मृतकहरू सित होईन । अल्लाहले आफ्नो नबी मोहम्मद ﷺ लाई संबोधित गर्दै भन्नु भयो :

﴿وَاسْتَغْفِرْ لِذَنْبِكَ وَلِلْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ﴾ (محمد:١٩)

"आफ्नो त्रुटिको मुक्तिका लागि र आस्तिक पुरूष एवम् आस्तिका महिलाबृन्दको मुक्तिका लागि अल्लाहसित क्षमा मांगदै गर् र प्रार्थना गर्दै गर् ।" (मुहम्मद:१९)

तिर्मिजीमा एउटा सही हदीस वर्णन गरिएको छ कि एउटा अन्धो व्यक्तिले नबी ﷺ को सेवामा उपस्थित भयो र निवेदन गर्यो : हे अल्लाहका रसूल मेरो लागि अल्लाह सित प्रार्थना गर्नु होस कि मेरो दृष्टि पुनः फिर्ता गरून् । नबी ले भन्नु भयो :

"तिम्रो यहि ईच्छा छ भने ठीक छ, मँ प्रार्थना गरि दिन्छु, र यदि तिमी संतोष गर्नेछौ भने यो तिम्रो लागि अतिनै लाभदायक हुनेछ।"

**प्र-२७:** महाप्रलयको दिन नबी ﷺ को सिफ़ारिस पाउन का लागि हामीले के गर्नु पर्छ ?

**उ-२७:** हामी अल्लाहसित बिन्ती गरौं कि : हे अल्लाह! प्रलयको दिन हामीलाई नबीको सिफ़ारिस प्रदान गरून्।

अल्लाहको महावाणी छ :

﴿قُلْ لِلَّهِ الشَّفَاعَةُ جَمِيعًا﴾ (الزمر:٤٤)

'भनिदेउ: सबै प्रकारका सिफ़ारिस अल्लाहकै अधिकारमा हुन्।" (अलजोमर:४४)

तिर्मिज़ीमा एउटा हदीसमा छ कि नबी ﷺ ले एक जना लाई सिकाउनु भयो कि अल्लाहसित यस प्रकार दुआ गर्:

«اللهم شفعه في» (رواه الترمذي وقال: حسن صحيح)

"हे मेरो अल्लाह ! तिमी नबीलाई मेरो लागि सिफ़ारिसी बनाईदेउ।" (सुनन तिर्मिज़ी)

नबी ﷺ को बचन छ :

«إني خبأت دعوتي شفاعة لأمتي يوم القيامة، فهي نائلة إن شاء الله، من مات من أمتي لا يشرك بالله شيئا» (رواه مسلم)

"मैले आफ्नो भलोको निमन्त्रण र दुआलाई महाप्रलयको दिन आफ्नो समुदायको सिफारिसका लागि गुप्त राखेको छु। यदि अल्लाहले चाहोस् भने मेरो सिफारिस प्रत्येक उ व्यक्तिलाई प्राप्त हुनेछ, जसले मृत्युकाल सम्म कसैलाई अल्लाहको साझी न बनाएको होला।" (मुस्लिम)

अर्थात: जो शिर्क गर्दैन, उसले नबीको सिफारिस अवश्य पाउने छ।

**प्र–२८:** के जीवितहरूका अनुमोदन र सिफारिस लिन पाईन्छ ?

**उ–२८:** संसारिक व्यवहारमा जीवित व्यक्तिहरूद्वारा सिफारिस गराउनु उचित छ। अल्लाहको वाणी छ :

﴿مَنْ يَشْفَعْ شَفَاعَةً حَسَنَةً يَكُنْ لَهُ نَصِيبٌ مِنْهَا وَمَنْ يَشْفَعْ
شَفَاعَةً سَيِّئَةً يَكُنْ لَهُ كِفْلٌ مِنْهَا﴾ (النساء:٨٥)

"जसले मनोनित कार्यमा सिफारिस गर्छ, उसले उसको प्रतिफल पाउनेछ, र जसले अवैधानिक कार्यमा सिफारिस गर्छ, उसले पापको दण्ड पाउने छ ।" (अलनिसा:८५)

नबी ﷺ ले भन्नु भयो :

«اشفعوا تؤجروا» (صحيح، رواه أبو داود)

"शुभ कार्यमा सिफारिस गर, तिमीले प्रत्युपकार पाउनेछौ ।" (अबू दाउद)



# सुफीवाद (अध्यात्मवाद) को ख़तरा

**प्र-२९:** सुफीवाद इस्लामको दृष्टिमा कस्तो छ ?

**उ-२९:** नबी ﷺ, वहाँका सर्वश्रेष्ठ साथीहरू र ताबेईनको जीवनकालमा सुफीवादको वजूद (प्राप्य) थिएन, बरू यसको आविस्कार उस समय भयो जब युनानी पुस्तकहरूको अनुबाद अर्बी भाषामा गराईयो ।

सुफीवाद विभिन्न इस्लामी शिक्षाको प्रतिकूल र विपरीत हो । जस्तै :

**(क) अल्लाह बाहेक अरूसित दुआ माँगनु ।**

कतिपय सुफीहरू मृतकहरूसित दुआ माग्दछन् । जबकि नबी ﷺ ले भन्नु भएको छ :

«الدعاء هو العبادة» (رواه الترمذي وقال: حسن صحيح)

"दुआ नै इबादत र उपासना हो ।" (तिर्मिज़ी)

अतः दुआ इबादत अन्तर्गत भएकोले अल्लाह बाहेक

अरूसित मागनु ठूलो शिर्क हो, जसले गर्दा अर्का शुभ कार्यहरू पनि नष्ट हुन जान्छन् ।

(ख) धेरे जसो सुफीहरू यो आस्था राख्दछन् कि अल्लाह तआला स्वयम आफनो अस्तित्वको साथ प्रत्येक स्थानमा उपस्थित हुनुहुन्छ । जबकि यो कुर्आनको खुल्ला विरोध हो । कुर्आनमा छ :

﴿الرَّحْمَانُ عَلَى الْعَرْشِ اسْتَوَى﴾ (طه:٥)

"रहमान (दयालु परमात्मा) आकाशमा सिहांसन (अर्श) माथि बिराजमान छन् ।" (ताहा:५)

सही बोख़ारीमा छ कि अल्लाह सब भन्दा माथिल्लो आकाशमा सिंहासन (अर्श) माथि उच्च हुन् ।

(ग) केही सुफीहरू यो भावना राख्दछन् कि अल्लाह आपना प्राणिवर्गमा होलूल (विलीन) होई बक्सिएको छ । दमिश्क मा भूमिहित सुफीहरूको प्रसिद्ध नायक "इब्ने अर्बी" भन्छ :

«العبد رب، والرب عبد    يا ليت شعري من المكلف»

"उपासक नै ईश्वर हो र ईश्वर नै उपासक हुन् । तथापि

मँलाइ यो थाहै छैन कि उत्तरदायीको हो ?"

एउटा अवज्ञाकारी सुफीले त यहाँसम्म भनि दिएको छ:

«وما الكلب والخنزير إلا إلهنا وما الله إلا راهب في كنيسة»

"कुकुर र सुंगुर हाम्रा पूजनीय ईश्वर हुन् र गिर्जा घरमा जुन पादरी छ उनै अल्लाह हो ।"

(घ) कतिपय सुफीहरूको अकीदा छ कि अल्लाहले यस संसारलाई मोहम्मद ﷺ का लागि सृष्टि गरेकोछ । जबकि यो अकीदा क़ुर्आनको विपरीत छ । अल्लाहको महावाणी छ :

﴿وَمَا خَلَقْتُ الْجِنَّ وَالإِنسَ إِلاَّ لِيَعْبُدُونِ﴾ (الذاريات:٥٦)

"मैंले जिन्न र मनुष्यलाई केवल आफ्नो उपासना गर्नका लागि पैदा गरेको छु ।" (अलज्जारियात:५६)

अल्लाहको एक अर्को वाणी छ :

﴿وَإِنَّ لَنَا لَلآخِرَةَ وَالأُولَى﴾ (الليل:١٣)

"निस्संदेह संसार र परलोक हाम्रै लागि नै हुन् ।" (अल-लैल:१३)

(च) सुफीहरूको बहुमत यो भावना राख्दछ कि अल्लाहले मोहम्मद ﷺ लाई आफ्नो नूर (प्रकाश) बाट जन्म दिएको छ र अन्य संसारिक सामग्रीहरूलाई मोहम्मदको नूर बाट पैदागरेको छ तथा सर्वप्रथम अल्लाहले मोहम्मदलाई नै जन्म दियो, आदि। यी सबै भावनाहरू क़ुर्आन र हदीसका विपरीत हुन्।

सुफीहरूका प्रतिकूलताहरू मध्ये वली, सदाचारी र ॠृषिमुनिका नाम मन्नत (भाकल) मान्नु, तिनीहरूका कब्र (चिहान) लाई तवाफ (परिक्रमा) गर्नु, कब्रमाथि कलश, गजुर र गुमज बनाउनु, मजार नजिक उर्स लगाउनु, जिक्र अज्कार र दुआ अवैधानिक रूपले गर्नु, जिक्र र दुआको बेला नर्तन र नाचगर्नु, आगो खाउनु, जन्तर, यन्त्र, जादू र दीठ बन्धन गर्नु, अनृत्य र अनुचित रूपले समाजका माल समान खानु र मानिसहरूसँग छल व्यवहार गर्नु, इत्यादि हुन्।



# कुर्आन र हदीसको प्रति हाम्रो व्यवहार

**प्र-३०:** के हामी अल्लाह र उसका रसूलको प्रवचनमाथि अरूकसैको वचनलाई प्रधानता दिन सक्छौं ?

**उ-३०:** हामी अल्लाह र उसका रसूलको प्रवचनमाथि अरूकसैको बचनलाई प्रधानता दिन सक्दैनौं ।

किनकि अल्लाहको महावाणी छ :

﴿يَاأَيُّهَا الَّذِينَ آمَنُوا لاَ تُقَدِّمُوا بَيْنَ يَدَيِ اللَّهِ وَرَسُولِهِ﴾ (الحجرات:١)

"हे आस्था राख्नेहरू हो ! अल्लाह र उसका रसूलको तुलनामा कसैलाई महानता न देउ (अल्लाह र उसका रसूलभन्दा अगाडी न बढ) ।" (अलहुज्रात:१)

नबी ﷺ ले भन्नु भयो :

«لا طاعة لمخلوق في معصية الخالق» (صحيح رواه أحمد)

"सृष्टिकर्ताको अवज्ञामा कुनै प्राणिका आज्ञापालन गर्नु सख्त मनाही छ।" (अहमद)

हज्रत इब्ने अब्बास रज़ि अल्लाहु अन्हुले भन्नु भयो :

«أراهم سيهلكون، أقول: قال النبي ﷺ، ويقولون قال أبو بكر وعمر» (رواه أحمد وغيره)

"मँलाई यस्तो लाग्दछ कि यिनीहरू विनष्ट गरिदिईनेछन्, मँ भन्दछु कि नबी ﷺ ले यो भन्नु भयो, तर यिनीहरू भन्दछन् कि अबू बक्र र उमरले त यस्तो भन्नु भयो।" (अहमद आदि)

**प्र-३१:** यदि कुनै धार्मिक विषयमा हाम्रो बीच भिन्नता हुन गयो भने हामीले के गर्नु पर्नेछ ?

**उ-३१:** यस्तो अवस्थामा हामीले क़ुर्आन र हदीसतिर प्रवृत हुनु पर्छ र यी दुबैलाई नै मध्यस्त मान्नु पर्दछ। अल्लाहको बचन छ :

﴿فَإِنْ تَنَازَعْتُمْ فِي شَيْءٍ فَرُدُّوهُ إِلَى اللَّهِ وَالرَّسُولِ إِنْ كُنْتُمْ تُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الآخِرِ ذَلِكَ خَيْرٌ وَأَحْسَنُ تَأْوِيلاً﴾

(النساء:٥٩)

"यदि कुनै विषयमा तिम्रो बीच मतभेद उत्पन्न होस भने समाधानको लागि अल्लाह र रसूलतिर लगेर जाउ, यदि तिमी अल्लाह र महाप्रलयमाथि आस्था राख्दछौ । यो तिम्रो लागि राम्रो हो र यसको परिणाम पनि उत्तम छ ।" (अलनिसा:५९)

नबी ﷺ ले भन्नु भयो :

«تركت فيكم أمرين لن تضلوا ما تمسكتم بهما كتاب الله وسنة رسوله» (رواه مالك وصححه الألباني في صحيح الجامع)

"मैले तिम्रो बीच दुई वस्तु, छाड़िएको छु, जहिले सम्म तिमी यी दुवैलाई बलिष्ठतापुर्वक थामी राख्नेछौ, कदापि तिमी पथभ्रष्ट हुने छैनौ। ती मध्ये एउटा अल्लाहको किताब (क़ुर्आन) हो र अर्को मेरो सुन्नत (हदीस) हो ।" (मालिक, सही अलजामे)

**प्र-३२:** उ व्यक्ति इस्लामको दृष्टिमा कस्तो छ जुन यो भावना राख्दछ कि इस्लामी आदेशात्मक र निषेधात्मक शिक्षाहरू उसका लागि जरूरी छैनन् र उ यसको उत्तरदायी पनि छैन ?

**उ-३२:** यस्तो व्यक्ति नास्तिक, धर्मभ्रष्ट र इस्लाम बाट निष्कासित छ। किनकि उपासना मात्र अल्लाहकै लागि हो। "ला इलाह इल्लल्लाह मोहम्मदुर्र-सूलुल्लाह" लाई स्वीकार्नुको उद्देश्य पनि यही हो। आराधना वास्तविक रूपले उस समय सम्म पूर्ण हुन सक्दैन जब सम्म प्रत्येक विषयमा अल्लाहको आज्ञापालन न गरियोस् र उसलाई नै आराधित मानियोस्।

अर्थात: अकीदा होस वा आस्था, इबादत होस वा उपासना, यी सबै अभियाचनमा इस्लामी नियमलाई मध्यस्थ स्वीकार गर्नु पर्दछ। जीवनका प्रत्येक कार्यक्षेत्र हरूमा अल्लाहकै आदेशको पालन गर्नु पर्दछ। यो स्वीकार गर्नु पर्दछ कि कुनै वस्तु र कार्यलाई पवित्र अथवा वर्जित (हलाल वा हराम) घोषीत गर्नु अल्लाहकै अधिकार हो। तसर्थ बिना ईश्वरीय तर्क र प्रमाणले कुनै वस्तु वा कार्यलाई पवित्र अथवा वर्जित मान्नु एक प्रकारको शिर्क हो। जुन अल्लाहको इबादतमा अरुलाई साझी बनाउनु जस्तो हो।



# कब्र (समाधि) दर्शनका नियम र शैली

**प्र-३३:** कब्रलाई ज़ियारत (दर्शन) गर्नु कस्तो छ र दर्शन को उद्देश्य के छ ?

**उ-३३:** पुरूषहरूका लागि कुनै पनि समय कब्रका जियारत गर्नु मनोनित छ तर महिलावृन्दका लागि प्रतिबद्ध छ ।

यसका विभिन्न उद्देश्य र नियमहरू हुन्, जस्तै :

(क) यसमा जीवितहरूका लागि शिक्षा र पाठ छन् कि उनिहरुले पनि एक न एक दिन मर्नै पर्छ तसर्थ शुभ कार्यमा लाग्नु जरूरी हो ।

नबी ﷺ ले भन्नु भयो :

«كنت قد نهيتكم عن زيارة القبور فزوروها» (رواه مسلم)

"निस्संदेह मैले तिमीहरूलाई कब्रको जियारत बाट रोकि दिएको थिएं तर अब अनुमति दिराखेछु कि तिमीहरू कब्रको जियारत (दर्शन) गर् ।" (मुस्लिम)

एक अन्य हदीस मा छ :

«فإنها تذكركم بالآخرة» (صحيح رواه أحمد وغيره)

"चिहानको दर्शन गर्दा तिमीलाई परलोक याद आउने छ ।" (अहमद आदि)

(ख) कब्रको दर्शन गर्दा हामी मृतकहरूको मुक्तिका लागि अल्लाहसित प्रार्थना गरौं । मृतकहरूलाई पुकार्नु वा तिनीहरूसित दुआका लागि निवेदन गर्नु मिल्दैन । नबी ﷺ ले आफ्ना साथीहरूलाई कब्रिस्तान (समाधि स्थल) मा प्रवेश गर्दा खेरि यो दुआ पढ़नको लागि भन्नु भयो :

«السلام عليكم أهل الديار من المؤمنين والمسلمين، وإنا إن شاء الله بكم لاحقون أسأل الله لنا ولكم العافية» (رواه مسلم)

"हे यस स्थानका मुस्लिम तथा मूमिन (आस्तिक) निवासीवर्ग ! तिमीहरूमाथि अल्लाहका शान्ति र कृपा होस् । यदि अल्लाहले चाहियो भने हामी तिमीहरूसँग छिट्टै मिल्नेछौं । हामी आफ्नो र तिम्रो

लागि अल्लाहसित शान्तिका याचना गर्दछौं ।" (मुस्लिम)

(ग) कब्रमाथि बस्नु र उतिर नुहार गरी नमाज पढ्नु उचित छैन ।

नबी ﷺ को भनाई छ :

«لا تجلسوا على القبور ولا تصلوا إليها» (رواه مسلم)

"कब्रहरूमाथि न बस्, न उस दिशा नुहार गरी नमाज पढ् ।" (सही मुस्लिम)

(घ) कब्रहरू नजिक क़ुर्आन पढ्नु सख्त र नितांत रूपले मनाही छ । नबी ﷺ ले भन्नु भयो :

«لا تجعلوا بيوتكم مقابر، فإن الشيطان ينفر من البيت الذي تقرأ فيه سورة البقرة» (رواه مسلم)

"आपना आवासहरूलाई कब्रिस्तान जस्तो न बनाउ, निस्संदेह शैतान उस आवासबाट पलायन गर्न थाल्छ जसमा सूरह बक़्रह पढिन्छ ।" (मुस्लिम)

यस हदीसमा यो संकेत छ कि कब्रिस्तान क़ुर्आन पढ्नको लागि उचित स्थान छैन । बरू क़ुर्आन पढ्नको लागि

आवास (गृह) उचित स्थान हो ।

नबी ﷺ र उनका साथीहरूबाट यसको कुनै प्रमाण छैन कि वहाँहरूले मृतकहरूका लागि कहिले पनि क़ुर्आन पढ़े। बरू वहाँहरू मृतकको लागि दुआ गर्दथे । नबी ﷺ जब कुनै मृतकलाई गाड़ेर निवृत्त हुन्थ्यो भने एक छिन विराम गर्दै भन्नु हुन्थ्यो :

«استغفروا لأخيكم وسلوا له التثبيت فإنه الآن يسأل»

(صحيح رواه الحاكم)

"आफ्नो भाईको मुक्तिका लागि याचना गर, किनकि अहिले नै उसित पूछताछ गरिनेछ ।" (हाकिम)

(च) कब्रमाथि फूल र सुमन ईत्यादि राख्नु हराम छ । किन भने नबी ﷺ र वहाँकासाथीहरूले यस्तो गर्नु भएन । साथै यसमा नसारा (ईसाईहरू) सँग अनुरूपता छ ।

(छ) चुना वा पेन्टले कब्रलाई पोत्नु अवैधानिक छ । यस्तै कब्रमाथि कलश वा गुंबज ईत्यादि बनाउनु उचित छैन । किनकि हदीसमा छ :

«نهي رسول الله ﷺ أن يجصص القبر و أن يبنى عليه»
(رواه مسلم)

"नबी ﷺ ले कब्रलाई चुनले पोत्नु र उसमाथि कलश, गुँबज, भित्तो आदि बनाउनु बाट रोक्नु भएको छ।" (मुस्लिम)

(ज) हे मेरा मुसलमान दाजुभाई हरूहो ! मृतकहरूलाई पुकार्नु, तिनीसित दुआ गराउनु, सहायता मांगनु, आदि बाट बाँच्नु होस्। किनकि यो ठूलो शिर्क हो। मृतकहरू लाई कुनै प्रकारको अधिकार प्राप्त छैन। केवल अल्लाह सित माँगनु होस्, अल्लाह नै शक्तिमान हो र उ नै दुआ, पुकार स्वीकृत गर्ने वाला हो।



# कब्र नजिक सज्दा गर्नु र उसका तवाफ (परिक्रमा) गर्नु

**प्र-३४:** क़ब्र नजिक सज्दा गर्नु र जनावर जबह (पशु बध) गर्नु कस्तो छ ?

**उ-३४:** कब्र नजिक सज्दा गर्नु र जनावर जबह गर्नु मूर्ति पूजा, अनभिज्ञता र ठूलो शिर्क हो। किनकि जबह (बलिदान) र सज्दा महान इबादत हुन्। र इबादत केवल अल्लाहको लागि गर्नु पर्छ। जसले यी कार्यहरू अल्लाह बाहेक अरूको लागि गर्छ उ अनेकेश्वरवादी हुन जान्छ। अल्लाहको महावाणी छ :

﴿قُلْ إِنَّ صَلاَتِي وَنُسُكِي وَمَحْيَايَ وَمَمَاتِي لِلَّهِ رَبِّ الْعَالَمِينَ ٥ لاَ شَرِيكَ لَهُ وَبِذَلِكَ أُمِرْتُ وَأَنَا أَوَّلُ الْمُسْلِمِينَ﴾ (الأنعام:١٦٢، ١٦٣)

"भनिदेउ! कि मेरा नमाज, बलिदान, जीवन र

निधन केवल अल्लाहकै लागि हुन्, जुन सम्पूर्ण संसारका परमातमा हुन् । उसको कोही साझी छैन, मँलाई यस्तै आदेश मिलेको छ, र मँ प्रथम आज्ञाकारी छु ।" (अलअन्आम:१६२,१६३)

अर्को श्लोकमा अल्लाहको वाणी छ :

﴿إِنَّا أَعْطَيْنَاكَ الْكَوْثَرَ ○ فَصَلِّ لِرَبِّكَ وَانْحَرْ﴾

(الكوثر:١،٢)

"हे नबी! मैले तिमीलाई कौसर प्रदान गरेको छु, तसर्थ आफ्नो परमात्माका लागि नमाज पढ र कुर्बानी (बलिदान) गर् ।" (अलकौसर:१,२)

यी बाहेक धेरै जसो क़ुर्आनी आयात (श्लोक) मा यो स्पष्ट गरिएको छ कि सज्दा र बलिदान महान इबादत र आराधना हुन् र यी दुबैलाई अल्लाह बाहेक कसैको लागि गर्नु ठूलो शिर्क हो ।

**प्र-३५:** वली (सदाचारी) को कब्रका तवाफगर्नु, उनको लागि भेंट चढ़ाउनु, भाकुल र मन्नत मान्नु, नजर नियाज गर्नु आदिको के हुकुम छ ? इस्लामी दृष्टिकोणले वली कोलाई भनिन्छ ? के वलीसित

दुआका लागि प्रार्थना गर्नु उचित छ ?

**उ-३५**: मृतकहरूका लागि बलिदान गर्नु, भेंट चढ़ाउनु, भाकल गर्नु, नजर नियाज गर्नु आदि ठूलो शिर्क हो ।

क़ुर्आन अनुसार वली त्यस मुसलमानलाई भनिन्छ जो अल्लाह सँग डराउँदछ र उसको अवज्ञा गर्दैन र उसका साथ कसैलाई शरीक गर्दैन । कहिलेकाही यस मुस्लिम अद्वैतवादी र आज्ञाकारी वलीबाट केही यस्ता करामत र चमत्कारहरू पनि प्रकट हुन्छन् । जसको माध्यमबाट अल्लाहले आवश्यकता परेको बेला उसलाई सम्मानित गर्दछ । तर वली हुनका लागी व्यक्तिको हातमा कुनै करामत र चमत्कार प्रकट हुनु शर्त होईन किनकि क़ुर्आनमा यसको शर्त हुने कुरा बताईएको छैन केवल आस्था र सँयमताको शर्त निर्धारण गरिएको छ ।

मृत्यु पछि वली वा अन्य व्यक्तिहरूसित दुआका लागि दर्खास्त गर्नु अवैधानिक छ, तर जीवित सदाचारीहरू सित दुआ गराउनु उचित हो ।

कब्रलाई तवाफ गर्नु वर्जित छ । तवाफ मात्र प्रतिष्ठित काबाको लागि विशिष्ट (खास) छ ।

जो कब्रका तवाफ यस उद्देश्यले गर्दछ कि उ कब्रका परिक्रमा गर्दा कब्रवासीको निकटता प्राप्त गर्न सक्छ। यस्तो भावना ठूलो शिर्क हो। यदि कब्रका तवाफ गर्दा उसको लक्ष्य अल्लाहको निकटता प्राप्त गर्नु हो, भने यो अप्रिय र अस्वीकृत आविस्कार (बिदअत) हो।

कब्रलाई तवाफ गर्नु र उस दिशा नमाज पढ्नु सख्त मनाही छ यद्यपि उसको उद्देश्य अल्लाहका प्रसन्नता पाउनु किन न होस।



# अल्लाहको मार्गतिर आहवान गर्नु

**प्र-३६:** अल्लाहको मार्गतिर बोलाउनु, अर्थात: दावत तब्लीग गर्नु कस्तो छ ?

**उ-३६:** यो प्रत्येक मुसलमानको कर्तव्य हो, जसलाई अल्लाहले क़ुर्आन र हदीसको उत्तराधिकार प्रदान गरेको छ। अल्लाहतिर बोलाउनको लागि जो आदेश आएको छ, त्यो प्रत्येक मुसलमानलाई सम्मिलित छ। अल्लाहको महावाणी छ :

﴿ادْعُ إِلَى سَبِيلِ رَبِّكَ بِالْحِكْمَةِ وَالْمَوْعِظَةِ الْحَسَنَةِ﴾ (النحل:١٢٥)

"हिक्मत (विज्ञान) र प्रियतम प्रवचन का साथ आफ्नो परमात्माको मार्गतिर बोलाउ।" (अलनहल:१२५)

अल्लाहले अर्को ठाउँमा भनेको छ :

﴿وَجَاهِدُوا فِي اللَّهِ حَقَّ جِهَادِهِ﴾ (الحج:٧٨)

"अल्लाहको मार्गमा उचित रूपले जिहाद गर् ।"
(अलहज:७८)

अत: प्रत्येक मुसलमानहरूलाई जिहादका सबै प्रकार हरूमा यथासंभव सहभागी हुनु जरूरी छ । विशेषगरि वर्तमान कालमा मुसलमानहरूमाथि अनिवार्य छ कि इस्लामी शिक्षाका पालन गरून्, अल्लाहको मार्गतिर बोलाउन्, र अल्लाहको मार्गमा जिहाद गरून् ।

यो उत्तरदायित्व प्रत्येक मुसलमानमाथि लागु छ, यसको चुक्तिमा न्यून्ता त्रुटि गर्नु पर्दैन । यसमा त्रुटि गर्ने वाला अवज्ञाकारी मानिने छ ।



# कब्र आदिलाई छुनु वा चुम्नु

**प्र-३७:** के नबी ﷺ, अन्य पैगम्बर (ईशदूत) हरू, तथा वलीहरूका कब्रलाई छुनु उचित छ ? यस्तै मकामे इब्राहीम, काबाको भित्तो, काबाको पिधान र काबाको ढोकालाई छुनु कस्तो छ ?

**उ-३७:** हज़्रत अबुल अब्बास -रहेमहुल्लाह-ले ब्यान गर्नु भएको छ कि इस्लामी बिधावानहरूले यस कुरा माथि सम्मत गर्नु भएका हुन् कि कुनै प्रकारको कब्रलाई हात आदिले छुनु उचित छैन ।

हज्रे अस्वदको बाहेक संसारमा कुनै पनि खनिज पदार्थ यस्तो छैन जसलाई चुम्नु धार्मिक दृष्टिकोणले उचित होस् । सही बुखारी र सही मुस्लिममा हज़्रत उमर रज़ि अल्लाहु अन्हुको यो प्रवचन बखान गरिएको छ कि वहाँले हज्रे अस्वदलाई चुम्दाखेरि भन्नु भयो :

«والله إني أعلم أنــك حجـر لا تضـر ولا تنفـع ولـولا أني رأيت رسول الله ﷺ يقبلك ما قبلتك» (متفق عليه)

"अल्लाहको शपथ ! मलाई थाहा छ कि तँ मात्र एउटा पत्थर छस्, नत हानि पु-याउन सक्छस् न लाभ, यदि मैले नबी ﷺ लाई तँ लाई चुम्दा न हेरेको हुन्थें भने म तँलाई कहिल्यै चुम्ने थिएन ।" (बोखारी, मुस्लिम)

अल्लाहको घर "काबा" कुनै प्राणिको घरको समान छैन । अल्लाहको घरलाई छुनु वा चुम्नु बेग्लै कुरा हो ।

इमाम गज़ाली -रहेमहुल्लाह- भन्नु हुन्छ :

"कब्रलाई छुनु ईसाई र यहुदीहरूको रीतिथिती हो ।"

"मुक़ामे इब्राहीम" को बारेमा हज़्रत क़तादह ले भन्नु भयो :

"मुसलमानहरूलाई उसको पछाडि नमाज पढ़नका लागि आदेश दिईएको छ, उसलाई छुनका लागि आदेश दिईएको छैन ।"

इमाम नौवी -रहेमहुल्लाह- को भनाई छ :

"मक़ामे इब्राहीमलाई चुम्नु वा छुनु बिदअत (मनगढ़त कार्य) हो, यसको कुनै प्रमाण छैन ।"

इमाम अबूल अब्बासले चारौं इमाम तथा अन्य इस्लामी

विद्यावानहरूका सहमत नक्ल गर्नु भएको छ कि काबाका दुईटै शामी कुना वा अन्य कुनै भागलाई चुम्नु उचित छैन किनकि नबी ﷺ ले मात्र यम्नी कुनालाई छुनु भएको थियो । यस्तै काबाको पिधान (गेलाफ, पर्दा) काबाको ढोका, हर्मे मक्की र हर्मे मदनीका ढोकाहरूलाई छुनु वा चुम्नु उचित छैन ।

अल्लाह तआलासित दुआ छ कि हामी सबै मुसलमानहरू-लाई सही इस्लामी अकीदामाथि हिंड्न र शिर्क एवम् बिदअतबाट बच्नको लागि ज्ञान र साहस देउन् । (आमीन)

अनुवादक :
मोहम्मद सलीम साजिद नेपाली
धनौजी-३, धनुषा (नेपाल)
(रियाध : २५-१-१४२५ हिजरी)



نيبالي

# مسائل مهمة في العقيدة الصحيحة

إعداد:
فضيلة الشيخ محمد جميل زينو
ترجمة:
محمد سليم ساجد النيبالي

المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات
بغرب الديرة - ص.ب: ١٥٤٤٨٨ الرياض: ١١٧٣٦
هاتف: ٤٣٩١٩٤٢ فاكس: ٤٣٩١٨٥١